टे.फो.न. ४२६२५९०,४२६२८६२
फ्याक्स न. ९७७-१-४२६२६९६



# नेपाल सरकार
# स्वास्थ्य तथा जनसंख्या मन्त्रालय
## स्वास्थ्य समन्वय महाशाखा
( सार्वजनिक सूचना समन्वय शाखा )

रामशाहपथ,
काठमाण्डौ, नेपाल ।

प.स. :- ०७७/७८
च.नं. :- २४

मिति: २०७७।०८।२९

Regd No. दर्ता नं. ००९/७७/७८
Date मिति २०७७/०८/२९
PN पत्र ९

श्री रुक्शना कपाली
ल.म.न.पा - १६, ललितपुर ।

बिषय: सूचना उपलब्ध गराईएको सम्बन्धमा ।

उपरोक्त सम्बन्धमा मिति: २०७७।०७।२६ गते तपाईले माग गरेको सूचना सम्बन्धमा स्वास्थ्य तथा जनसँख्या मन्त्रालय अन्तर्गत नीति योजना तथा अनुगमन महाशाखाको मिति: २०७७।०८।२६ च.न.७६४ को पत्रानुसार, मानव शरीरको अंग प्रत्यारोपन (नियमित तथा निषेध) ऐन,२०५५ को दफा २ (ग) मा अंग प्रत्यारोपान भन्नाले आधुनिक चिकित्सा प्रणाली अनुसार व्यवस्थित रुपमा रोगको उपचार गर्ने प्रयोजानको लागि एक मानव शरीरको अंग अर्को मानव शरीरमा प्रत्यारोपन गरिने कार्य सम्झनु पर्छ भनी उल्लेख गरेको तर तपाईले माग गरेको सूचना Reconstructive Surgery मा पर्ने भएको र सो बिषय अंग प्रत्यारोपन (नियमित तथा निषेध) ऐन,२०५५ मा उल्लेख नभएकोले अझ स्पष्ट हुनकोलागि स्वास्थ्य सेवा विभागमा रहेको अंग प्रत्यारोपन समन्वय समितिमा लेखी पठाईसकिएको व्यहोरा अनुरोध छ ।

गणेश श्रीवास्तव
ब.स्वा.शि. अधिकृत



ཀྭི་ཡེར་ཡུཐ་གྲུཔ 𑐎𑑂𑐰𑐫𑐳 𑐫𑐸𑐠 𑐐𑑂𑐬𑐸𑐥 +ⴰⵍⵍ ⵍⵓ ⵍⵍⵍ
क्वयेर युथ ग्रुप کُوییر یُتھ گُرپ
दर्ता नं : २४४१३५/०७७/०७८

**Queer Youth Group**

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

नेसं ११४१ कछला २४
२०७७ कार्तिक २७




श्री सूचना अधिकारी,
स्वास्थ्य तथा जनसंख्या मन्त्रालय,
सिंहदरबार, काठमाडौँ।

**विषय : सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा निम्न तपसिलमा उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना हाम्रो संस्थाको अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै उक्त सूचना नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछौँ।

**तपसिलमा माग गरिएका सूचनाहरू सम्बन्धी पृष्ठभूमी**:- कतिपय पारलैङ्गिक (Transgender) व्यक्तिहरूले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचानसँग आफ्नो शरीरलाई मेल खुवाउनका लागि विभिन्न चिकित्सकीय पद्वति वा विधिहरू अपनाउने गर्दछन्। यसलाई International Standards of Transgender Health Care अनुसार Gender Affirming Health Care भनिन्छ। यस्ता Gender Affirming Health Care अन्तर्गत Male-to-Female हर्मोन प्रयोग, स्तन प्रत्यारोपण, Facial Feminization Surgery, Voice Feminization Surgery, Facial/Body Hair Removal Laser वा Electrolysis प्रकृया, Penis to Vagina Reconstruction Surgery, इत्यादी प्रकृयाहरू पर्दछन् भने Female-To-Male हर्मोन प्रयोग, स्तन हटाउने Mastectomy, Face Masculinization Surgery, Voice Masculinization Surgery, Facial/Body Hair Growth / Transplantation, Vagina to Penis Reconstruction Surgery, पाठेघर हटाउन शल्यक्रिया इत्यादी प्रकृयाहरू पर्दछन्।

<u>**तपसिल**</u>

१) कुनै व्यक्तिले Gender Affirming Health Care का शल्यक्रिया वा प्रत्यारोपण गर्न प्रचलित मानव शरीरको अङ्ग प्रत्यारोपण ऐनको कुनै प्रावधान उल्लेख गरेको छ वा यस ऐन बमोजिम व्यक्तिले यस्ता शल्यक्रिया वा प्रत्यारोपण गर्नबाट बाधा पर्ने स्थिति छ कि छैन ?

२) बुँदा १ मा उल्लिखित ऐन बाहेक अन्य कुनै प्रचलित ऐन, कानुन, नीतिनियम, नियमावली वा निर्देशिकाले यस्ता शल्यक्रिया वा प्रत्यारोपण बारे केही उल्लेख गरेको छ वा त्यसले कुनै बाधा पुर्याउने स्थिति छ ?




**भवदीय,** रुक्शना कपाली, कार्यकारी निर्देशक

---


ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup